नेपाल धितोपत्र बोर्डबाट अनुमतिपत्र प्राप्त

# नेपाल स्टक एक्सचेञ्ज लिमिटेड

(नेपाल सरकारको स्वामित्व भएको)

# Nepal Stock Exchange Limited

(An Undertaking of Government. of Nepal)

**पत्र संख्या : ०७७/०७८**
**चलानी नं. :**

नेपाल स्टक एक्सचेञ्ज लिमिटेडको तथ्यांक प्रयोग सम्बन्धी कार्यविधि, २०७७ लागू भएको सम्बन्धमा।

सूचना

उपर्यूक्त सम्बन्धमा यस नेपाल स्टक एक्सचेञ्ज लिमिटेडको संलग्न बमोजिम " नेपाल स्टक एक्सचेञ्ज लिमिटेडको तथ्यांक प्रयोग सम्बन्धी कार्यविधि, २०७७" मिति २०७७/०९/०१ गते स्वीकृत गरी सोही मिति देखि लागू हुने व्यहोरा यस लिमिटेडको सञ्चालक समितिको निर्णयानुसार सबैको जानकारीको लागि अनुरोध छ।

(सिद्धिनाथ मिश्र)
का.मु.बरिष्ठ अधिकृत
कानून उप-शाखा
मिति: २०७७/०९/१०


**पो. ब. नं. १५५०, यू.एन.आई शान्तिमार्ग, काठमाण्डौ, नेपाल।**
**P. O. Box 1550, Singhdarbar Plaza, Kathmandu, Nepal.**
**Tel.: 4250755, 4250756, 4250757, 4250758, 4250759, 4250734, 4250735 Fax: 4262538**
**email : stock@enet.com.np**
यस लि. को साविकको नाम : नेपाल धितोपत्र विनिमय बजार लि.

# नेपाल स्टक एक्सचेन्ज लिमिटेडको तथ्यांक प्रयोग सम्बन्धी कार्यविधि, २०७७

सूचना प्रविधि नीति, २०७७ अन्तर्गत रही विभिन्न प्रयोगकर्ताहरु बाट निश्चित शुल्क लिई वास्तविक समयको वा ऐतिहासिक तथ्यांक उपलब्ध गराउन नेपाल स्टक एक्सचेञ्ज लिमिटेडको सञ्चालक समितिले देहाय बमोजिमको कार्यविधि बनाएको छ ।

**परिच्छेद-१**

प्रारम्भिक

१. संक्षिप्त नाम र प्रारम्भ:(१) यस कार्यविधिको नाम "नेपाल स्टक एक्सचेन्ज लिमिटेडको तथ्यांक प्रयोग सम्बन्धी कार्यविधि, २०७७" हुनेछ ।

(२) यो कार्यविधि नेपाल स्टक एक्सचेन्ज लिमिटेडको संचालक समितिले तोकेको मिति देखि लागू हुनेछ ।

२. परिभाषा : विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस कार्यविधिमा :-

(क) "ऐन" भन्नाले धितोपत्र सम्बन्धी ऐन,२०६३ सम्झनुपर्दछ ।

(ख) "ए.पि.आई. (एप्लिकेसन प्रोग्रामिङ इन्टरफेस)" भन्नाले नेप्सेको प्रणाली र प्रयोगकर्ताको प्रणाली बीच तथ्यांक आदान प्रदान गर्ने स्वचालित माध्यम सम्झनु पर्दछ ।

(ग) "कारोबार सदस्य" भन्नाले धितोपत्र कारोबारको सञ्चालन विनियमावली, २०७५ मा परिभाषित कारोबार सदस्यलाई सम्झनु पर्दछ ।

(घ) "ग्राहक" भन्नाले धितोपत्र कारोबारका लागि खरिद वा बिक्री आदेश दिने व्यक्ति वा संस्था तथा धितोपत्र कारोबारसँग सम्बन्धित राफसाफ तथा फर्छ्यौट गर्न निर्देशन दिने व्यक्ति वा संस्था सम्झनु पर्दछ ।

(ङ) "नेप्से" भन्नाले नेपाल स्टक एक्सचेन्ज लिमिटेड सम्झनु पर्दछ ।

(च) "बोर्ड" भन्नाले ऐनको दफा ३ बमोजिम स्थापना भएको नेपाल धितोपत्र बोर्डलाई सम्झनु पर्दछ ।

(छ) "प्रयोगकर्ता" भन्नाले नेप्सेको प्रणालीमा सिर्जित तथ्यांक प्रयोग गर्ने लगानीकर्ता, तथ्यांक व्यापारी, वित्तीय विश्लेषक, औजार विकासकर्ता, संचार माध्यम, विद्यार्थी, गैरव्यापारिक शैक्षिक तथा अनुसन्धानात्मक संस्था आदि लाई सम्झनु पर्दछ ।

(ज) "समिति" भन्नाले नेप्से सञ्चालक समितिलाई सम्झनु पर्दछ ।

कम्पनी सचिव

झ) "तथ्यांक" भन्नाले नेप्सेमा कारोबार पछि उत्पन्न भएका तथ्यांक, धितोपत्रको मूल्यमा प्रभाव पर्ने सूचनाहरु तथा समितिले समय समयमा वितरण योग्य भनि तोकिदिएका तथ्यांक सम्झनु पर्दछ ।

## परिच्छेद-२

## तथ्यांक प्रयोग सम्बन्धी व्यवस्था

३. **तथ्यांक प्रयोगको प्रयोजन** : कुनै पनि तथ्यांक प्रयोगकर्ताले निम्न बमोजिमको प्रयोजनको निमित्त नेप्सेबाट तथ्यांक प्राप्त गर्न सक्दछ ।

क) इन्भेष्टमेन्ट कम्पनी, वित्तीय विश्लेषक आदिको प्रयोगको निम्ति

ख) तथ्यांक वितरक, वित्तीय औजार विकासकर्ता आदिको व्यापारिक तथा पूनः वितरण प्रयोजनको निमित्त

ग) संचार माध्यमहरुको समाचार निर्माण तथा प्रदर्शन प्रयोजनको लागि

घ) गैर व्यापारिक शैक्षिक तथा अनुसन्धानात्मक प्रयोग (विश्वविद्यालय, कलेज, गैर नाफामूलक अनुसन्धानात्मक संस्थाहरु आदिको लागि)

ङ) बिदेशी कम्पनी वा व्यक्तिको अनुसन्धान प्रयोजनको लागि

४. **निवेदन दिनुपर्ने** : (१) नेप्सेको कुनै पनि तथ्यांक प्रयोगकर्ताले नेप्से समक्ष तथ्यांक प्रयोगको स्पष्ट उद्देश्य समेत खुलाई अनुसूची १ बमोजिमका कागजात सहित नेप्सेमा निवेदन दिनु पर्नेछ ।

(२) उपदफा (१) का अतिरिक्त ए.पि.आई. प्रयोगकर्ताको हकमा सूचना प्रविधि पूर्वाधार तथा प्रणाली जडान सम्बन्धी विवरणहरु (IP address, VPN parameters आदि) समेत खुलाउनु पर्नेछ ।

५. **निरीक्षण गर्ने** : (१) दफा ३(१) बमोजिम निवेदन प्राप्त भए पश्चात ए.पि.आई. प्रयोगकर्ताको हकमा नेप्सेले सूचना प्रविधि पूर्वाधार र ए.पि.आई प्रयोगको लागि सुरक्षित रहे नरहेको जाँच गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम निरीक्षण गरे पश्चात तोकिएको न्युनतम मापदण्ड पुरा गरेको नपाईएमा ए.पि.आई. जडान गर्न अनुमति दिईने छैन । यस्तो मापदण्ड नेप्सेले बनाई लागु गर्न सक्नेछ ।

(३) उपदफा (२) बमोजिम ए.पि.आई. जडान गर्न अनुमति नदिएमा निरीक्षण सम्पन्न भएको ७ दिन भित्र नेप्सेले सोको कारण खुलाई निवेदकलाई जानकारी गराउनु पर्नेछ ।

६. **शुल्क तिर्नु पर्ने** : (१) प्रयोगकर्ताले नेप्सेबाट उपलब्ध हुने तथ्यांक प्राप्त गर्नको लागि अनुसूची २ मा उल्लेख भए बमोजिमको शुल्क त्रैमासिक रूपमा अग्रिम भुक्तानी गर्नु पर्नेछ ।

कम्पनी सचिव

(२) नियामक वा अनुसन्धान निकायहरुबाट माग भई आएका तथ्यांकहरु निशुल्क उपलब्ध गराइनेछ ।

(३) नेप्से सदस्य रहेको अन्तराष्ट्रिय संस्थाहरुको हकमा उपदफा (१) बमोजिमका शुल्कहरु आंशिक वा पूर्ण रूपमा मिनाहा गर्न सकिनेछ ।

७. **सम्झौता गर्नु पर्ने** : (१) ए.पि.आइ प्रयोगकर्ताले तथ्यांक प्रयोग गर्नु भन्दा अघि नेप्सेसँग अनुसूची ३ बमोजिमको ढाँचामा सम्झौता गर्नु पर्नेछ ।

८. **अनाधिकृत प्रयोग गर्न नहुने** : (१) प्रयोगकर्ताले अनाधिकृत रूपमा तथ्यांक प्रयोग गरेको पाईएमा नेप्सेले उक्त प्रयोगकर्ताको सेवा अवरूद्ध गर्नेछ ।

(२) उपदफा (१) बमोजिम तथ्यांकको अनाधिकृत प्रयोगले क्षति हुन गएमा नेप्सेले समितिले तोके बमोजिम जरिवाना भराउन सक्नेछ ।

९. **अनुगमन गर्न सक्ने** :(१) नेप्सेले उपलब्ध गराएका तथ्यांकहरु अनाधिकृत प्रयोग भए नभएको सुनिश्चित गर्न नेप्सेले समय समयमा अनुगमन टोली गठन गरी अनुगमन गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम अनुगमनमा बाधा व्यवधान खडा गरेमा नेप्सेले सम्झौता रद्ध गर्न सक्नेछ ।

## परिच्छेद-३

## विविध

१०. **अधिकार नेप्सेमा निहित रहने** :यस कार्यविधिमा अन्यत्र जे सुकै लेखिएको भएता पनि कुनै प्रयोगकर्तालाई तथ्यांक उपलब्ध गराउने वा नगराउने अधिकार नेप्सेमा निहित रहनेछ ।

११. **निर्देशन जारी गर्न सक्ने** : (१) यस कार्यविधिमा जुनसुकै कुरा उल्लेख भएता पनि नेप्सेले समय समयमा थप निर्देशन जारी गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिमको निर्देशनको पूर्ण पालना गर्नु तथ्यांक प्रयोगकर्ताको कर्तव्य हुनेछ ।

१२. **संशोधन र व्याख्या** : (१)यस कार्यविधिलाई संशोधन गर्ने र व्याख्या गर्ने अधिकार नेप्सेको सञ्चालक समितिमा निहित हुनेछ ।

२०६६।०९।१०
कम्पनी सचिव

## अनुसूची-१

(दफा ४ संग सम्बन्धित)

नेप्सेको तथ्यांक प्रयोगकर्ताले तथ्यांक प्रयोगको अनुमति लिंदा पेश गर्नु पर्ने कागजातको विवरण

**क) शैक्षिक तथा अनुसन्धान प्रयोजनको लागि**

(अ) व्यक्तिगत प्रयोजनमा

- तथ्यांक प्रयोगको प्रयोजन स्पष्ट रूपमा खुलेको निवेदन पत्र ।
- निवेदक बिद्यार्थी भएमा सम्बन्धीत शैक्षिक संस्थाको सिफारिस पत्र |
- सम्पर्क विवरण (स्थायी ठेगाना, अस्थायी ठेगाना, सम्पर्क नम्बर आदि) ।
- नागरिकता प्रमाणपत्रको प्रतिलिपि वा सरकारी निकायबाट जारी भएको परिचयपत्र ।

आ) संस्थागत प्रयोजनमा

- तथ्यांक प्रयोगको प्रयोजन स्पष्ट रूपमा खुलेको निवेदन पत्र ।
- विश्वविद्यालयको हकमा डिनको कार्यालयको र निजी शैक्षिक संस्थाको हकमा सम्बन्धित संस्थाको प्रमुखको सिफारिस पत्र
- सम्पर्क विवरण (स्थायी ठेगाना, अस्थायी ठेगाना, सम्पर्क नम्बर आदि) ।
- निजी शैक्षिक संस्थाको हकमा संस्था दर्ता प्रमाणपत्र र कर चुक्ता प्रमाणपत्रको प्रतिलिपि

**ख) व्यवसायिक प्रयोजनको लागि**

- तथ्यांक प्रयोगको प्रयोजन स्पष्ट रूपमा खुलेको निवेदन पत्र ।
- कम्पनी दर्ताको प्रमाणपत्रको प्रतिलिपि
- तथ्यांक वितरक (Vendors/Distributers) को हकमा तथ्यांक वेचविखन गर्न सक्ने उद्देश्य खुलेको प्रबन्धपत्र नियमावलीको प्रतिलिपि
- संचार माध्यमको हकमा सूचना विभागमा दर्ता भएको प्रमाणपत्रको प्रतिलिपि
- कर चुक्ता प्रमाणपत्रको प्रतिलिपि
- ए.पि.आई. जडानको लागि सर्भर, IP Address, नेटवर्क रेखाचित्र आदिको विवरण
- विस्तृत व्यापार योजना
- पूर्ण सम्पर्क विवरण (स्थायी ठेगाना, अस्थायी ठेगाना, सम्पर्क नम्बर आदि)

यसका अतिरिक्त नेप्सेले आवश्यक देखेमा अन्य जानकारीहरु पनि माग गर्न सक्नेछ ।

## अनुसूची २

(दफा ५ संग सम्बन्धित)

तथ्यांक प्रयोग शुल्क

क. इन्भेष्टमेन्ट कम्पनी, वित्तीय विश्लेषक आदिको प्रयोगको निम्ति

| S.No. | Categories of Data | Nature of Data | Tariff (NPR) | Recurring period | Remarks |
|---|---|---|---|---|---|
| 1 | Real-Time Data (may be delayed not more than 30 seconds) | All Data | 17000 | Per month | |
| | | Indices Data | 3,000 | Per month | |
| | | Floor sheet | 6,000 | Per month | |
| | | Live Trading Prices | 6,000 | Per month | |
| | | Corporate Information | 2,000 | Per month | |
| | | Corporate Actions | 3,000 | Per month | |
| | | Other Market Data (Excluding Market depth) | 2,000 per category | Per month | Additional charges will apply for each category |
| 2 | Real Time Delayed Data (Minimum15 minutes) | All Data | 10,000 | Per month | |
| | | Indices Data | 1,700 | Per month | |
| | | Floor sheet | 3,000 | Per month | |
| | | Live Trading Prices | 3,000 | Per month | |
| | | Corporate Information | 1,000 | Per month | |
| | | Corporate Actions | 1,700 | Per month | |
| | | Other Market Data (Excluding Market depth) | 1,000per category | Per month | Additional charges will apply for each category |
| 3 | Historic trading Data | Up to 6 months | 10,000 | One time | |
| | | Up to 1 years | 15,000 | One time | |
| | | Up to 3 years | 25,000 | One time | |
| | | Up to 5 years | 30,000 | One time | |
| | | More than 5 years | 35,000 | One time | |
| 4 | One-Time Installation Charge | | 100,000 | One time | Mandatory for all API users |

कम्पनी सचिव

ख. तथ्यांक वितरक, वित्तीय औजार विकासकर्ता आदिको व्यापारिक तथा पून-वितरण प्रयोजनको निमीत्त

| S.No. | Categories of Data | Nature of Data | Tariff (NPR) | Recurring Period | Remarks |
|---|---|---|---|---|---|
| 1 | Real-Time Data (may be delayed not more than 30 seconds) | All Data | 60,000 | Per month | |
| | | Indices Data | 14,000 | Per month | |
| | | Floor sheet | 30,000 | Per month | |
| | | Live Trading Prices | 30,000 | Per month | |
| | | Corporate Information | 6,000 | Per month | |
| | | Corporate Actions | 14,000 | Per month | |
| | | Other Market Data (Excluding Market depth) | 3,500 per category | Per month | Additional charges will apply for each category |
| 2 | Real Time Delayed Data (Minimum15 minutes) | All Data | 30,000 | Per month | |
| | | Indices Data | 6,000 | Per month | |
| | | Floor sheet | 12,000 | Per month | |
| | | Live Trading Prices | 12,000 | Per month | |
| | | Corporate Information | 3,500 | Per month | |
| | | Corporate Actions | 5,000 | Per month | |
| | | Other Market Data (Excluding Market depth) | 2500 per category | Per month | Additional charges will apply for each category |
| 3 | Historic trading Data | Up to 6 months | 20,000 | One time | |
| | | Up to 1 year | 30,000 | One time | |
| | | Up to 3 years | 50,000 | One time | |
| | | UP to 5 years | 75,000 | One time | |
| | | More than 5 years | 1,00,000 | One time | |
| 4 | One-Time Installation Charge | | 100,000 | One time | Mandatory for all API users |

कम्पनी सचिव

ग. संचार माध्यमहरुको समाचार प्रयोजनको लागि

| S.No. | Categories of Data | Nature of Data | Tariff (NPR) | Recurring Period | Remarks |
|---|---|---|---|---|---|
| 1 | Real-Time Data (may be delayed not more than 30 seconds) | All Data | 10,000 | Per month | |
| | | Indices Data | 2,000 | Per month | |
| | | Floor sheet | 5,000 | Per month | |
| | | Live Trading Prices | 5,000 | Per month | |
| | | Corporate Information | 10,000 | Per month | |
| | | Corporate Actions | 20,000 | Per month | |
| | | Other Market Data (Excluding Market depth) | 500 per category | Per month | Additional charges will apply for each category |
| 2 | Real Time Delayed Data (Minimum15 minutes) | All Data | 5,000 | Per month | |
| | | Indices Data | 1,000 | Per month | |
| | | Floor sheet | 2,500 | Per month | |
| | | Live Trading Prices | 2,500 | Per month | |
| | | Corporate Information | 500 | Per month | |
| | | Corporate Actions | 1000 | Per month | |
| | | Other Market Data<br><br>(Excluding Market depth) | 250 per category | Per month | Additional charges will apply for each category |
| 3 | Historic trading Data | Up to 6 months | 5,000 | One time | |
| | | Up to 1 year | 10,000 | One time | |
| | | Up to 3 Years | 15,000 | One time | |
| | | Up to 5 Years | 20,000 | One time | |
| | | More than 5 years | 25,000 | One time | |
| 4 | One-Time Installation Charge | | 100,000 | One time | Mandatory for all API users |

घ. गैर व्यापारिक शैक्षिक तथा अनुसन्धानात्मक प्रयोग (विश्वविद्यालय, कलेज, गैर नाफामुलक अनुसन्धानात्मक संस्थाहरु आदिको लागि)

| S.No. | Categories of Data | Nature of Data | Tariff (NPR) | Recurring period | Remarks |
|---|---|---|---|---|---|
| 1 | Real Time Delayed Data (Minimum15 minutes) | All Data | 5000 | Per month | |
| | | Indices Data | 500 | Per month | |
| | | Floor sheet | 1000 | Per month | |
| | | Live Trading Prices | 1000 | Per month | |
| | | Corporate Information | 200 | Per month | |
| | | Corporate Actions | 200 | Per month | |
| | | Other Market Data | 1000 per category | Per month | Additional charges will apply for each category |
| 2 | Historical trading Data | Up to 6 months | 2,000 | One time | Free for students |
| | | Up to 1 year | 5,000 | One time | Free for students |
| | | Up to 2 years | 10,000 | One time | Free for students |
| | | Up to 5 years | 50,000 | One time | Free for Students |
| | | All years | 100,000 | One time | Rs. 5,000 for students |
| 3 | One-Time Installation Charge | | 100,000 | One time | Only in case of Real Time Delayed Data |

कम्पनी सचिव

(ङ) तथ्यांक प्रयोगकर्ता विदेशी कम्पनी वा व्यक्तिका लागि भएमा

| S.No. | Categories of Data | Nature of Data | Tariff (USD) | Recurring Period | Remarks |
|---|---|---|---|---|---|
| 1 | Real-Time Data (may be delayed not more than 30 seconds) | All Data | 2000 | Per month | |
| | | Indices Data | 500 | Per month | |
| | | Floor sheet | 700 | Per month | |
| | | Live Trading Prices | 700 | Per month | |
| | | Corporate Information | 200 | Per month | |
| | | Corporate Actions | 500 | Per month | |
| | | Other Market Data (Excluding Market depth) | 100 per category | Per month | Additional charges will apply for each category |
| 2 | Real Time Delayed Data (Minimum15 minutes) | All Data | 1000 | Per month | |
| | | Indices Data | 250 | Per month | |
| | | Floor sheet | 350 | Per month | |
| | | Live Trading Prices | 350 | Per month | |
| | | Corporate Information | 100 | Per month | |
| | | Corporate Actions | 250 | Per month | |
| | | Other Market Data | 50 per category | Per month | Additional charges will apply for each category |
| 3 | Historic trading Data | Up to 6 months | 500 | One time | |
| | | Up to 1 year | 700 | One time | |
| | | Up to 3 Years | 1000 | One time | |
| | | Up to 5 Years | 1500 | One time | |
| | | More than 5 years | 2000 | One time | |
| 4 | One-Time Installation Charge | | 1500 | One time | Mandatory for all API users |

## अनुसूची ३

(दफा ७ संग सम्बन्धित)

<u>तथ्यांक प्रयोगकर्तासंग गरिने सम्झौताको ढाँचा</u>

यो तथ्याङ्क प्रयोग सम्बन्धी सम्झौता मिति ........ ("सम्झौता मिति("मा नेपाल स्टक एक्सचेञ्ज लिमिटेड, यु.एन.आइ शान्तिमार्ग, भद्रकाली, काठमाडौं (उप्रान्त "प्रथम पक्ष" भनिएको (र .....]दोस्रो पक्ष नाम[, [जसको मूल ठेगाना स्थान / कर्पोरेट कार्यलय उल्लेख गर्ने [(उप्रान्त "दोस्रो पक्ष" भनिएको( बीच नेपाल स्टक एक्सचेञ्ज लिमिटेडको तथ्यांक प्रयोग सम्बन्धी कार्यविधि २०७७ बमोजिम सम्पन्न भएको छ ।

१. **तथ्याङ्क प्रयोगको उद्देश्य र प्रयोजन :**

क. दोस्रो पक्षले नेपाल स्टक एक्सचेञ्ज लिमिटेडको तथ्यांक प्रयोग सम्बन्धी कार्यविधि २०७७को दफा ३ मा उल्लेखित प्रयोजन] खुलाउने...........[प्रयोजनको लागि प्राप्त तथ्यांकहरु प्रयोग गर्न सक्नेछ ।

ख. **तथ्याङ्क प्रयोगको सिमाः** यस सम्झौता अनुरुप प्रदान गरिएको तथ्यांक सम्झौताको बुँदा नं. १ )क( बाहेकका अन्य प्रयोजन तथा प्रचलित नेपाल कानून, प्रदेश तथा स्थानिय कानूनहरू, अन्तराष्ट्रिय सन्धिहरू, सामाजिक मूल्य मान्यता तथा व्यक्तिगत सामाजिक मान हानी तथा आर्थिक नोक्सानी पुग्ने गरी, आपराधिक प्रयोजनमा प्रयोग गर्न पाइने छैन ।

२. **तथ्याङ्क प्रयोगको लागि अनुमति** :प्रथम पक्षले दोस्रो पक्षलाई नेपाल स्टक एक्सचेन्ज लिमिटेडको तथ्यांक प्रयोग सम्बन्धी कार्यविधि, २०७७ को अनुसूची २ बमोजिम निम्न तथ्याङ्कमा पहुँच गर्न, प्रतिलिपि गर्न र प्रयोग गर्नको लागि सीमित, अहस्तान्तरणीय, र बदरयोग्य अनुमति प्रदान गर्दछ । [अनुसूची २ बमोजिम प्रदान गरिने तथ्यांकको सूची ]

क. .............

ख. .............

ग. .............

३. **प्रथम पक्षको दायित्व** :यस सम्झौता अन्तर्गत प्रथम पक्षले दोस्रो पक्षलाई तथ्यांक प्राप्त गर्नको लागि प्रणाली सम्मको पहुंच) ए .पी .आई (प्रदान गर्ने छ।

४. **दोस्रो पक्षको दायित्व :**

क. यस सम्झौता अन्तर्गत तथ्यांक प्राप्त गर्नको लागि आवश्यक सम्पूर्ण उपकरण व्यवस्था गर्नेजडान गर्ने , तथा सोको सुरक्षा एवम् मर्मत गर्ने दायित्व दोस्रो पक्षको हुनेछ।

ख. तथ्याङ्कको दुरुपयोग र अनाधिकृत पहुँच वा खुलासा हुनबाट रोक्नु दोस्रो पक्षको दायित्व हुने छ ।

ग. **तथ्याङ्कको सुरक्षाः** दोस्रो पक्षले तथ्याङ्कको दुरुपयोग र अनाधिकृत पहुँच वा खुलासाबाट जोगाउन निम्नानुसारको सुरक्षा व्यवस्था मिलाउनु पर्नेछ।

- तथ्याङ्क भण्डारण गरिएको कुनै पनि सर्भर वा प्रणालीमा पर्याप्त भैतिक नियन्त्रण र पासवर्ड सुरक्षाहरू कायम राख्नु पर्ने छ ।

कम्पनी सचिव

- यस सम्झौता अन्तर्गत अनुमति दिइएकोमा बाहेक तथ्याङ्कको कुनै प्रयोग वा खुलासा रोक्नको लागि अन्य आवश्यक उचित उपायहरू अपनाउने ।

**घ. क्षतिपूर्ति:** दोस्रो पक्षले प्रयोग गरेको प्रणालीको कारणले प्रथम पक्षको प्रणालीमा क्षति पुगेमा वा आफ्नो तर्फबाट भएको सम्झौताको शर्तहरूको उल्लंघनबाट अर्को पक्षलाई हानी पुग्न गएमा सबै घाटा र खर्चहरूको क्षतिपूर्ति दिनु पर्नेछ ।

५. **कुनै वारेन्टी तथा ग्यारेण्टी नरहने:** तथ्याङ्क "जे जस्तो छ" सोही अवस्थामा प्रदान गरिने छ ।प्रथम पक्षले उपलब्ध गराएको तथ्यांकको शुद्धता /अशुद्धता, पुर्णता /अपुर्णता, ढिलाई आदिको बिषयमा वा तथ्यांक उपलब्ध गराउन नसकिएको काबु बाहिरको परिस्थितिमा प्रथम पक्ष उपर कुनै कानूनी दायित्व रहने वा कार्यवाही गरिने छैन ।

६. **तथ्याङ्क प्रयोगको शुल्क** :दोस्रो पक्षले नेप्सेको तथ्यांक प्रयोग सम्बन्धी कार्यविधि २०७७ को दफा ६ मा उल्लेख भए बमोजिम शुल्क तिर्नु पर्ने छ ।

७. **सम्झौता अवधि** :यो सम्झौता ........[मिति] देखि .........[मिति]सम्म लागु हुनेछ। तर कुनै पनि पक्षले अर्को पक्षलाई कम्तिमा सात दिन पहिले लिखित सुचना दिइ कुनै पनि कारणले यो सम्झौता समाप्त गर्न सक्नेछ ।

८. **पूर्ण सम्झौता:** नेप्सेको तथ्यांक प्रयोग सम्बन्धी कार्यविधि ,२०७७ लगायत यस सम्झौतामा सन्दर्भित सबै संलग्न सूचीहरू र अन्य कागजातहरू यो सम्झौताको अभिन्न अङ्ग रहने छ ।

| प्रथम पक्ष | दोस्रो पक्ष |
|---|---|
| हस्ताक्षर: | हस्ताक्षर: |
| नाम: | नाम: |
| नेपाल स्टक एक्सचेञ्ज लिमिटेडबाट अधिकार प्राप्त | ...............................बाट अधिकार प्राप्त |
| पद: | पद: |
| ठेगाना: | ठेगाना: |
| साक्षी: | साक्षी: |

इति सम्बत २०... साल ..... महिना ...... गते ....रोज शुभम